# यौन अभिमुखिकरण, लैङ्गिक पहिचान र यौन विशेषता सम्बन्धीका आधारभूत शब्दवाली र तिनका परिभाषाहरू

**यौन विशेषता** (**Sex characteristics**) : यौन विशेषता भन्नाले मानिसको यौनाङ्ग वा प्रजनन अङ्गबाट छुट्टिने शारीरिकी भिन्नता हो ।

**लैङ्गिक पहिचान** (**Gender identity**) : लैङ्गिक पहिचान भन्नाले हरेक व्यक्तिको भित्री मन वा अन्तरात्माबाट लैङ्गिकता सम्बन्धी आएको व्यक्तिगत अनुभूती र अनुभव एवं भित्री मनबाट आएको आन्तरिक बोध र नीजले त्यसलाई गर्ने प्रस्तुतीकरण तथा आफ्नो लैङ्गिकता चिनाउन प्रयोग गर्ने शब्दवाली हो ।

**यौन अभिमुखिकरण** (**Sexual orientation**) : कुनै व्यक्ति कुन लैङ्गिकताका अरु व्यक्तिहरू तर्फ यौन तथा प्रणयात्मक (sexual and romantic) आकर्षण महसुस गर्दछ भन्ने आधारमा नीजको यौनिक पहिचानलाई यौन अभिमुखिकरण भनिन्छ ।

**अन्तरलिङ्गी** (**Intersex**) : पुलिङ्गी वा स्त्रीलिङ्गी शरीरका परम्परागत धारणाहरूमा नअटाउने यौन विशेषताहरू (यौनाङ्ग, प्रजनन ग्रन्थी तथा गुणसुत्रको ढाँचा) भएका व्यक्तिहरूलाई अन्तरलिङ्गी व्यक्ति भनिन्छ । अन्तरलिङ्गी हुनु यौन विशेषताको विषय हो । अन्तरलिङ्गी व्यक्तिहरू आफूलाई पुरुष, महिला वा गैर-द्वयसांखिक भनी पहिचान गर्न सक्छन् । अन्तरलिङ्गी व्यक्तिहरू विषमयौनिक, समयौनिक, द्वियौनिक, सर्वयौनिक, अयौनिक, इत्यादी यौन अभिमुखिकरणका हुन सक्छन् ।

**जन्मँदा यौनाङ्गको आधारमा इङ्गित गरिएको लिंग** (**Sex assigned at birth**) भन्नाले सामाजिक मूल्य मान्यता अनुसार कुनै शिशु जन्मन बित्तिकै नीजको यौन अङ्ग वा विशेषताको आधारमा नीजलाई केटा वा केटी भनेर गरिने निर्धारण भनी सम्झनुपर्छ ।

**जन्मँदा पुलिङ्गी इङ्गित गरिएका व्यक्ति (Assigned male at birth)** भन्नाले कुनै शिशु जन्मन बित्तिकै नीजको यौनाङ्ग शिश्न (Penis) भएको आधारमा नीजलाई केटा / पुरुष भनी गरिएको निर्धारण भनी सम्झनु पर्छ ।

**जन्मँदा स्त्रीलिङ्गी इङ्गित गरिएका व्यक्ति (Assigned female at birth)** भन्नाले कुनै शिशु जन्मन बित्तिकै नीजको यौनाङ्ग योनी (Vagina) भएको आधारमा नीजलाई केटी / महिला भनी गरिएको निर्धारण भनी सम्झनु पर्छ ।

**त्याचलैङ्गिक व्यक्ति (Cisgender person) :** जन्मँदा यौनाङ्गका आधारमा इङ्गित गरिएको लिंगसँग मेल खाने लैङ्गिक पहिचान भएका व्यक्तिहरू । **त्याचलैङ्गिक** र **पारलैङ्गिक** विपरीतार्थी शब्द हुन् । "**त्याचलैङ्गिक**" शब्दको अभावमा "यौनाङ्गका आधारमा इङ्गित गरिएको लिंगसँग मेल खाने लैङ्गिक पहिचान भएका व्यक्तिहरू" लाई मात्र सामान्य (normal) वा सामान्य लिङ्गका व्यक्ति (normal gender) भनिने गरिन्थ्यो जसकारण अरु लैङ्गिक पहिचानका व्यक्तिहरूलाई असामान्यकरण (abnormalization) भयो । हाम्रो समाजले यस प्रकृतिका मानिसहरूलाई मात्र "सामान्य" मान्ने सामाजिक भाष्यलाई तोड्दै, सबै लैङ्गिक पहिचानहरू सामान्य हुन् भन्ने भाष्य कायम गर्न यो शब्दको उत्पत्ती भएको हो । कुनै पनि व्यक्ति जसको जन्मँदा यौनाङ्गको आधारमा पुलिङ्गी इङ्गित गरिएको र लैङ्गिक पहिचान पुरुष हो भने ऊ **त्याचलैङ्गिक पुरुष ( cisgender man / cis man )** र कुनै पनि व्यक्ति जसको जन्मँदा यौनाङ्गको आधारमा स्त्रीलिङ्गी इङ्गित गरिएको र लैङ्गिक पहिचान महिला हो भने ऊ **त्याचलैङ्गिक महिला ( cisgender woman / cis woman )** भनिन्छ ।

**पारलैङ्गिक व्यक्ति (Transgender person) :** जन्मँदा यौनाङ्गका आधारमा इङ्गित गरिएको लिंगसँग मेल नखाने लैङ्गिक पहिचान भएका व्यक्तिहरू । **पारलैङ्गिक पुरुष (Transgender Male / Trans man )** भन्नाले ती पुरुषहरू जसको जन्मँदा यौनाङ्गको आधारमा स्त्रीलिङ्गी इङ्गित गरिएको थियो भनी सम्झनु पर्छ । पारलैङ्गिक पुरुषहरू जन्मदाँ स्त्रीलिङ्गी इङ्गित गरिएका हुन्छन् । योनी लिएर जन्मेका हुनाले समाजले उनीहरूलाई केटी वा बालिका भनेर इङ्गित गर्दछ, र हुर्कने बढ्ने क्रममा हुने लैङ्गिक अनुभव र प्रस्तुतीकरणको हकमा केटा वा पुरुषको गुण विकास हुन्छ र

आफूलाई पुरुष भनी पहिचान गर्दछन् । **पारलैङ्गिक महिला** (**Transgender Female / Trans woman**) भन्नाले ती महिलाहरू जसको जन्मँदा यौनाङ्गको आधारमा पुलिङ्गी इङ्गित गरिएको थियो भनी सम्झनु पर्छ । पारलैङ्गिक महिलाहरू जन्मदाँ पुलिङ्गी इङ्गित गरिएका हुन्छन् । शिश्न लिएर जन्मेका हुनाले समाजले उनीहरूलाई केटा वा बालक भनेर इङ्गित गर्दछ, र हुर्कने बढ्ने क्रममा हुने लैङ्गिक अनुभव र प्रस्तुतीकरणको हकमा केटी वा महिलाको गुण विकास हुन्छ र आफूलाई महिला भनी पहिचान गर्दछन् । अङ्ग्रेजीमा यसलाई **Men of trans experience** वा **Women of trans experience** पनि भनिन्छ ।

**गैर-द्वयसांखिक लैङ्गिक पहिचान** ( **Non-binary gender identities** ) : पुरुष वा महिलाको परिभाषामा नअटाउने विभिन्न लैङ्गिक पहिचानहरूलाई गैर-द्वयसांखिक लैङ्गिक पहिचान भनिन्छ । पारम्पारिक लैङ्गिक भिन्नता सँग सम्बन्धित नरहेका र महिला वा पुरुष लैङ्गिकता दुबै नरहेको, दुबै रहेको वा मिश्रण जनाउने लैङ्गिक पहिचानहरूको विविधतलाई गैर-द्वयसांखिक भनिन्छ ।

**तेस्रोलिङ्गी** (**Third Gender**) : दक्षिण एसियाली धर्मसंस्कृतिमा आधारित आफूलाई महिला वा पुरुषको परिभाषामा नराख्ने आफ्नो छुट्टै समाज, संस्कार, रीतिरिवाज र रहन सहन भएको विभिन्न समुदायहरू छन् । सामाजिक मूल्य मान्यता अनुसार तेस्रोलिङ्गी व्यक्तिहरूलाई अलौकिक मानिन्छ र उनीहरूले दिएको आशिर्वाद र श्राप लाग्दछ भन्ने मान्यता समेत रहेको र उनीहरू कुनै सुखद अवशर जस्तै विवाह, नवजन्म शिशु, इत्यादीमा नाच गान गर्ने, आशिर्वाद दिने परम्परागत पेशा पनि गर्दछन् । कतिपय तेस्रोलिङ्गी समुदायहरूको लामो इतिहास नै छ, उनीहरूको छुट्टै स्थानमा समुदायगत बसोबास हुन्छ र आफ्नो समुदायमा कोही भित्रन चाहेमा, समुदायमा भित्री सकेपछी, समुदायमा कसैको मृत्यु हुँदा र कतिपय अवस्थामा समुदायको आफ्नै छुट्टै भाषा वा भाषिका समेत हुने गर्दछ । दक्षिण एसियामा हेर्दा यी तेस्रोलिङ्गी समुदायहरू हिजडा, किन्नर, मंगलामुखी, पावैया, ख्वाजासिरा, खुस्रा, खसुआ, अरवानी, इत्यादी हुन्छन् भने नेपालमा मेटी, कोथी, घाँडे, मौगियाह, मैंबाबु, फुलुमुलु, फोलोक मोलोक, इत्यादी हुन्छन् ।

**विषमयौनिक (Heterosexual/Straight) :** आफू भन्दा फरक लैङ्गिकता प्रति यौन तथा प्रणयात्मक आकर्षण महसुस गर्ने व्यक्ति

**समयौनिक (Homosexual) :** आफू जस्तै / उस्तै लैङ्गिकता प्रति यौन तथा प्रणयात्मक आकर्षण महसुस गर्ने व्यक्ति (समयौनिक पुरुष : Gay, समयौनिक महिला : Lesbian)

**द्वियौनिक (Bisexual) :** आफू भन्दा फरक लैङ्गिकता र आफू जस्तै लैङ्गिकता दुबै प्रति यौन तथा प्रणयात्मक आकर्षण महसुस गर्ने व्यक्ति

**सर्वयौनिक (Pansexual) :** सबै खाले लैङ्गिकता प्रति यौन तथा प्रणयात्मक आकर्षण महसुस गर्ने व्यक्ति वा यौन तथा प्रणयात्मक आकर्षण महसुस गर्न लैङ्गिकता बाधा नपर्ने व्यक्ति

**अयौनिक (Asexual) :** कुनै प्रकारको यौन तथा/वा प्रणयात्मक आकर्षण महसुस नगर्ने व्यक्ति

**सिमान्कृत यौन अभिमुखिकरण, लैङ्गिक पहिचान र यौन विशेषताका व्यक्ति (People of Marginalized Sexual Orientation, Gender Identity and Sex Characteristics) :** यौन अभिमुखिकरणमा विपरीत लैङ्गिकता तर्फ हुने आकर्षण बाहेकका विविधताहरू, लैङ्गिक पहिचानमा जन्मँदा यौनाङ्गको आधारमा इङ्गित गरिएको लिङ्गसँग मेल खाने लैङ्गिक पहिचान बाहेकका विविधताहरू र यौन विशेषतामा अन्तरलिङ्गी विविधताका व्यक्तिहरूलाई जनाइने छाता शब्द । यौन अभिमुखिकरण, लैङ्गिक पहिचान र/वा यौन विशेषताका आधारमा सामाजिक सिमान्तिकरणमा परेका जनसंख्या ।

**क्वयेर (Queer) :** सिमान्कृत यौन अभिमुखिकरण, लैङ्गिक पहिचान र यौन विशेषताका व्यक्तिहरूलाई जनाउने अर्को शब्द ।

**लैङ्गिक तथा यौनिक अल्पसङ्ख्यक (Gender and Sexual Minorities)** : नेपालको संविधानमा सिमान्कृत यौन अभिमुखिकरण, लैङ्गिक पहिचान र यौन विशेषताका व्यक्तिहरूलाई जनाउन प्रयोग गरिएको शब्दावली ।

**SOGISEC** (say : सोजिसेक्) - Sexual Orientation, Gender Identity and Sex Characteristics

**PoMSOGIESEC** (say : पोम् — सोजिसेक्) - People of Marginalized Sexual Orientation, Gender Identity and Sex Characteristics

**यौभिकयौता** - **यौ**न **अभि**मुखिकरण, लै**ङ्गिक** पहिचान र **यौ**न विशेष**ता**

यौभिकयौता सम्बन्धी यी अत्यन्तै आधारभूत शब्दहरू हुन् । समसामायिक अवस्थामा अन्तर्राष्ट्रिय मान्यता अनुसारको परिभाषाहरूलाई हामीले नेपाली भाषामा उल्लेख गरेका छौं । सीमितता : यस दस्तावेजले यौभिकयौता सम्बन्धी अत्यन्तै आधारभूत शब्दावलीको मात्र चर्चा गरेको छ । यद्यपि यसले यौभिकयौता सम्बन्धीको बुझाईमा प्रारम्भिक जग निर्माण गर्न सहयोग पुर्याउँदछ । यस विषयसँग सम्बन्धित भाषा र शब्दावली इभोल्भिङ डाइनामिकमा रहेको छ ।

**२०७७ वैशाख ५**

**17 April 2020**